

# राष्ट्रिय पारलैङ्गिक मागपत्र



# National Transgender Demand Sheet

**पारलैङ्गिक व्यक्तिहरूको लैङ्गिक पहिचानको मान्यता र त्यस सम्बन्धी कानुन तथा नीतिमा अत्यावश्यक व्यवस्थाहरू सम्बधी** सात बुँदे मागपत्र

१) लिंगको महलमा आफ्नो लैङ्गिक पहिचान अनुसार पारलैङ्गिक महिलाहरूले "महिला (Female)" तथा पारलैङ्गिक पुरुषहरूले "पुरुष (Male)" उल्लेख गर्न पाउने व्यवस्था हुनुपर्दछ ।

२) जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग र सोही अनुसार आफ्नो अभिभावकले राखिदिएको नाम बमोजिम बनिसकेका कागजातहरू आफ्नो लैङ्गिक पहिचान अनुसार आफूले इच्छाएको नाम उल्लेख गरेर पुनः प्राप्ती गर्न पाउने व्यवस्था हुनुपर्छ ।

**(क)** १६ वर्ष उमेर नपुगेका वा जुनसुकै उमेर भएपनि केही कारणवश नागरिकता बनाइ नसकेका व्यक्तिहरूले जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग र सोही अनुसार आफ्नो अभिभावकले राखिदिएको नाम बमोजिमका कागजपत्रहरू (जन्मदर्ता, शैक्षिक प्रमाणपत्रहरू, नाबालिक राहदानी, इत्यादी) संसोधन गरी आफ्नो लैङ्गिक पहिचान र आफूले इच्छाएको नाम उल्लेख गरी पुनःप्राप्त गर्ने व्यवस्था हुनुपर्छ ।

**(ख)** जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग र सोही अनुसार आफ्नो अभिभावकले राखिदिएको नाम बमोजिम नागरिकता बनाइसकेका व्यक्तिहरूले आफ्नो लैङ्गिक पहिचान अनुसार आफूले इच्छाएको नाम उल्लेख गरेर पुनः प्राप्ती गर्न पाउने र त्यस नागरिकताको आधारमा अरु सबै कागजपत्रहरू (जन्म दर्ता, शैक्षिक प्रमाणपत्रहरू, राहदानी, मतदाता परिचयपत्र, लालपुर्जा, इत्यादी) पनि संसोधन गरी पुनः प्राप्त गर्ने व्यवस्था हुनुपर्छ ।

**(ग)** माथिका बुँदाहरूमा उल्लिखित व्यवस्था आउन अघि कतिपय पारलैङ्गिक व्यक्तिहरूलाई व्यवस्थात्मक अभावका कारण लिंगको महलमा "अन्य" उल्लेख गरी प्रदान गरिएको नागरिकतालाई पनि संसोधन गरी आफ्नो लैङ्गिक पहिचान अनुसार पुनःप्राप्ती गर्ने व्यवस्था हुनुपर्छ ।

यसार्थ, पारलैङ्गिक पुरुषहरूको जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग "महिला" भनेर उल्लेख गरिदिएको र सोही अनुसार आफ्नो अभिभावकले राखिदिएको नामलाई आफूले इच्छाएको नाम सहित आफ्नो लैङ्गिक पहिचान "पुरुष" उल्लेख गरी पुन:प्राप्ती गर्ने व्यवस्था र पारलैङ्गिक महिलाहरूको जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग "पुरुष" भनेर उल्लेख गरिदिएको र सोही अनुसार आफ्नो अभिभावकले राखिदिएको नामलाई आफूले इच्छाएको नाम सहित आफ्नो लैङ्गिक पहिचान "महिला" उल्लेख गरी पुन:प्राप्ती गर्ने व्यवस्था हुनुपर्ने । यो व्यवस्था आउन अघि पारलैङ्गिक महिला तथा पुरुषहरूलाई व्यवस्थात्मक अभावका कारण विविध लैङ्गिक व्यक्तिहरू, गैर-द्वयसांखिक (Non-binary) र तेस्रोलिङ्गी व्यक्तिहरूसँगै "अन्य" उल्लेख गरेको नागरिकता प्रदान गरिएको थियो । "अन्य" उल्लेख गरेको नागरिकताले पारलैङ्गिक महिला तथा पुरुषहरूलाई सही ढङ्गले सम्बोधन गर्दैन । त्यसैले त्यस्ता नागरिकता पाएका पारलैङ्गिक महिला तथा पुरुषहरूले माथि उल्लिखित व्यवस्था अनुसार लैङ्गिक पहिचान उल्लेख गरेको नागरिकता पाउने व्यवस्था हुनुपर्ने ।

३) कुनै पनि व्यक्तिले आफ्नो स्व:अनुभूती अनुसारको लैङ्गिक पहिचान हासिल गर्नु निजको नितान्त वैयक्तिक आत्मनिर्णयको अधिकार अन्तर्गतको विषय हो । यसलाई अरु व्यक्ति, समाज, राज्य वा कानूनले निर्धारण गरिदिनु मिल्दैन । लिंगको महल र नाम परिवर्तन गर्नका निम्ति आत्मनिर्णय र स्व:पहिचान नै आधार हुनुपर्छ । यस सम्बन्धी सरल प्रकृयागत व्यवस्था बनाउनुपर्दछ ।

४) पारलैङ्गिक महिलाहरूलाई स्त्रीलिङ्गी शब्दहरू ( जस्तै: Ms., Madam, छोरी, she/her इत्यादी ) र पारलैङ्गिक पुरुषहरूलाई पुलिङ्गी शब्दहरू ( जस्तै : Mr, Sir, छोरा, he/him इत्यादी ) को प्रयोग गरी सम्बोधन गर्नुपर्दछ । कुनै पनि व्यक्तिलाई लैङ्गिक दुस्बोधन गर्नु र मृतनामले सम्बोधन गर्नु मौखिक र मानसिक दुर्व्यवहारको रूपमा लिनुपर्छ ।

५) पारलैङ्गिक महिलाहरूलाई महिला अन्तर्गत राखी र पारलैङ्गिक पुरुषहरूलाई पुरुष अन्तर्गत राखी कानुन, नीति तथा व्यवहारमा लागु गर्नुपर्दछ । पारलैङ्गिक व्यक्तिहरू महिला र पुरुषहरू नै हुन् र महिला तथा पुरुष भन्दा फरक भनी हेरिनुहुँदैन । पारलैङ्गिक पुरुषहरूलाई पुरुष अन्तर्गत र पारलैङ्गिक महिलाहरूलाई महिला अन्तर्गत नै राखेर हेरिनुपर्दछ ।

६) असान्दर्भिक रूपमा असान्दर्भिक हिसाबले व्यक्तिको Gender data संकलन नगर्ने पक्षमा हामी छौं । व्यक्ति पारलैङ्गिक रहेको विषय नीजको सामाजिक सुरक्षा र गोप्यनियताको दृष्टिकोणबाट हेरेर नीजलाई असुरक्षित महसुस हुने गरी अनावश्यक ढङ्गमा असान्दर्भिक अवस्थामा खुलाउन बाध्य पार्नुहुँदैन । राज्यसँग पारलैङ्गिक व्यक्तिहरू सम्बन्धी भएको विवरणहरू ती व्यक्तिहरूको मञ्जुरी बिना गोप्यनियता भङ्ग हुने र ती व्यक्तिहरूलाई uniquely

identify गर्न मिल्ने गरी विवरण खुलाइदिनु वा सार्वजनिक गरिदिनु हुँदैन , र कुनै व्यक्ति पारलैङ्गिक रहेको Data leak हुँदा नीजहरूको जीवनमा प्रत्यक्ष्य असरलाई ध्यानमा राख्दै Data Privacy को नियमहरू बन्नुपर्दछ ।

७) कुनै पनि व्यक्तिले आफ्नो लैङ्गिक पहिचान अनुसारको परिचयपत्र पाउनका निम्ति नीजलाई आफ्नो आत्मसम्मान र प्रतिष्ठामा आँच आउने, नीजको अरु मानव अधिकार हनन तथा उल्लंघन हुने, नीजको शारीरिक निष्ठामा खलल पुर्याउने, वा नीजको जीउ ज्यानमा अनुत्क्रमीय (irreversible) क्षती पुर्याउने र नीजको आफ्नो जीवन प्रतिको आत्मनिर्णय र वैयक्तिक स्वतन्त्रताको अतिक्रमण गर्ने प्रकारका सर्तहरू राखिनुहुन्न र त्यस्ता मापदण्डहरू पालना गर्न बाध्य तुल्याउनु हुँदैन । यस्ता व्यवस्थात्मक मापदण्ड मात्र नभएर व्यवहारिकतामा पनि अनावश्यक प्रश्न सोध्ने, दुर्व्यवहारपूर्ण अपमानजनक प्रश्न सोध्ने, मौखिक दुर्व्यवहार वा कुनै किसिमको पारद्वेषी व्यवहार गर्नुहुँदैन । यसमा नेपाल सरकारका हरेक निकायका सबै अधिकारी तथा कर्मचारीहरूले पारलैङ्गिक व्यक्तिहरू लगायत विविध लैङ्गिकता र यौनिकता सम्बन्धी आफूलाई शिक्षित बनाउनका निम्ति सरकारले पहल गर्नुपर्छ ।

पारलैङ्गिक व्यक्तिहरूले शिक्षा, स्वास्थ्य, रोजगार, लगायतका हरेक क्षेत्रमा विभेद, हिंसा र लाञ्छना भोग्दै आएका छन् । यस माथी राज्यले बनाउने असंवेदनशील असमावेशी ऐन कानुन नीति नियमका कारण ती विभेद, लाञ्छना र हिंसा अझै सब्बल हुँदछ । पारलैङ्गिक व्यक्तिहरूका विविध समस्या, मुद्दाहरू तथा विषयहरूमा यस मागपत्रले "लैङ्गिक पहिचानको कानुनी मान्यता" (Legal recognition of gender identity) को विषय उठाएको छ । यस मागपत्रमा उल्लेख विषयहरू लैङ्गिक पहिचानको मान्यता सम्बन्धी पारलैङ्गिक व्यक्तिहरूको विश्वव्यापी आन्दोलनका विषयवस्तु अनुरूप नै छन् ।

करिब तीन महिना देखि अनलाइन मार्फतको निरन्तर छलफल पश्चात ७ मार्च २०२० मा नेपालका सातै वटा प्रदेशहरूबाट पारलैङ्गिक महिला तथा पुरुषहरूको काठमाडौं थापाथली स्थित तान नेपालको प्राङ्गणमा भेला भई क्वयेर युथ ग्रुप (Queer Youth Group) र पारलैङ्गिक अधिकार समूह (Trans Rights Collective) को आयोजनामा यस राष्ट्रिय पारलैङ्गिक मागपत्र जारी गरी ३१ मार्च २०२० - अन्तर्राष्ट्रिय पारलैङ्गिक दृश्यताको दिवसमा सार्वजनिक गरिएको हो ।

शुभम् २०७६ चैत १८ गते

सँगै संगालिएको : परिभाषाहरू, पारलैङ्गिक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय प्रचलित मूल्य मान्यता व्यवस्थाको व्याख्या र यस मागपत्र जारी गरिएको प्रकृया सम्बन्धी

## परिभाषा

(१) **"जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग (Sex assigned at birth)"** भन्नाले सामाजिक मूल्य मान्यता अनुसार कुनै बच्चा जन्मन बित्तिकै नीजको यौन अङ्ग वा विशेषताको आधारमा नीजलाई केटा वा केटी भनेर गरिने निर्धारण भनी सम्झनुपर्छ ।

(२) **"जन्मँदा पुलिङ्गी इङ्गित गरिएका व्यक्ति (Assigned male at birth)"** भन्नाले कुनै बच्चा जन्मन बित्तिकै नीजको यौनाङ्ग लिंग भएको आधारमा नीजलाई केटा / पुरुष भनी गरिएको निर्धारण भनी सम्झनु पर्छ ।

(३) **"जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएका व्यक्ति (Assigned female at birth)"** भन्नाले कुनै बच्चा जन्मन बित्तिकै नीजको यौनाङ्ग योनी भएको आधारमा नीजलाई केटी / महिला भनी गरिएको निर्धारण भनी सम्झनु पर्छ ।

(४) **"लैङ्गिक पहिचान (Gender identity)"** भन्नाले हरेक व्यक्तिको भित्री मन वा अन्तरात्माबाट लैङ्गिकता सम्बन्धी आएको व्यक्तिगत अनुभूती र अनुभव एवं भित्री मनबाट आएको आन्तरिक बोध र नीजले त्यसलाई गर्ने प्रस्तुतीकरण तथा आफ्नो लैङ्गिकता चिनाउन प्रयोग गर्ने शब्दवाली भनी सम्झनु पर्छ ।

(५) **"पारलैङ्गिक व्यक्ति" (Transgender person)"** भन्नाले जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल नखाने लैङ्गिक पहिचान भएका व्यक्तिहरू हुन् भनी सम्झनु पर्छ ।

(६) **"पारलैङ्गिक पुरुष (Transgender Male )"** भन्नाले पुरुष लैङ्गिक पहिचान भएका ती व्यक्तिहरू जसको जन्मँदा यौनाङ्गको आधारमा स्त्रीलिङ्गी इङ्गित गरिएको थियो भनी सम्झनु पर्छ । पारलैङ्गिक पुरुषहरू जन्मदाँ स्त्रीलिङ्गी इङ्गित गरिएका हुन्छन् । योनी लिएर जन्मेका हुनाले समाजले उनीहरूलाई केटी वा बालिका भनेर इङ्गित गर्दछ, र हुर्कने बढ्ने क्रममा हुने लैङ्गिक अनुभव र प्रस्तुतीकरणको हकमा केटा वा पुरुषको गुण विकास हुन्छ र आफूलाई पुरुष भनी पहिचान गर्दछन् ।

(७) **"पारलैङ्गिक महिला (Transgender Female )"** भन्नाले महिला लैङ्गिक पहिचान भएका ती व्यक्तिहरू जसको जन्मँदा यौनाङ्गको आधारमा पुलिङ्गी इङ्गित गरिएको थियो भनी सम्झनु पर्छ । पारलैङ्गिक महिलाहरू जन्मदाँ पुलिङ्गी इङ्गित गरिएका हुन्छन् । लिंग लिएर जन्मेका हुनाले समाजले उनीहरूलाई केटा वा बालक भनेर इङ्गित गर्दछ, र हुर्कने बढ्ने क्रममा हुने लैङ्गिक अनुभव र प्रस्तुतीकरणको हकमा केटी वा महिलाको गुण विकास हुन्छ र आफूलाई महिला भनी पहिचान गर्दछन् ।

(८) **"स्वःअनुभव (Self-realisation)"** भन्नाले जन्मँदा यौनाङ्गको आधारमा केटा वा केटी भनेर हुर्काइएका व्यक्तिहरू हुर्कने प्रकृयामा समाजले हुर्काएको त्यस लैङ्गिकता अनुरूप आफू नरहेको र आफ्नो लैङ्गिक अनुभव त्यो भन्दा विपरीत रहेको विषय स्वयमले महसुस गर्नुलाई भनी सम्झनु पर्छ ।

(९) **"आन्तरण (Transition)"** भन्नाले पारलैङ्गिक व्यक्तिहरूले आफ्नो लैङ्गिक पहिचान अनुरूपको जीवनयापन हासिल गर्ने विविध प्रकृयालाई सम्झनुपर्छ । आफूलाई समाजले जुन लैङ्गिकतामा हुर्काइएको हो, आफू त्यो नरहेको विषयलाई अनुभव गरेपछी, आफ्नो स्वःअनुभूती अनुसारको लैङ्गिकतामा जीवनयापन गर्ने प्रकृयाहरूलाई "आन्तरण" भनिन्छ ।

**(क) "सामाजिक आन्तरण (Social transition)"** भन्नाले समाजिक हिसाबमा आफ्नो लैङ्गिक पहिचान अनुसारको जीवनयापन गर्न सुरु गर्ने, आफ्नो अभिभावकले राखिदिएको नाम परिवर्तन गरी आफूले इच्छाएको नामबाट चिनाउन सुरु गर्ने, आफ्नो लैङ्गिक पहिचान अनुरूप पहिरण लगाउन सुरु गर्ने, आफ्नो लैङ्गिक पहिचान अनुरूप समाजमा देखिन र बाँच्न गरिने सामाजिक पक्षका आन्तरण भनी सम्झनु पर्छ ।

**(ख) "चिकित्सकीय आन्तरण (Medical transition)"** भन्नाले विभिन्न चिकित्सकीय विधिहरू अपनाएर आफ्नो शरीरिक विशेषताहरूलाई आफ्नो लैङ्गिक पहिचानसँग मेल खाने हिसाबले गरिने चिकित्सकीय पक्षका आन्तरण भनी सम्झनुपर्छ । जस्तै : Male-to-Female आन्तरणमा एस्ट्रोजन हर्मोन थेरापि, स्तन प्रत्यारोपण, रौं हटाउने विधिहरू, फेसियल फेमिनाइजेसन सर्जरी, लिंगलाई योनीमा परिवर्तन गर्ने शल्यक्रिया, इत्यादी हुन सक्छ र Female-to-Male आन्तरणमा टेस्टेस्टेरोन हर्मोन थेरापि, स्तन हटाउने शल्यक्रिया, रौं बढाउने विधिहरू, पाठेघर हटाउने शल्यक्रिया, योनीलाई लिंगमा परिवर्तन गर्ने शल्यक्रिया, इत्यादी हुन सक्छ ।

कुनै व्यक्तिले कहिले, कुन, कसरी र के प्रकारका आन्तरणका प्रकृयाहरू अपनाउँछ भन्ने विषय नीजको व्यक्तिगत निर्णयको विषय हो । सबै पारलैङ्गिक व्यक्तिहरू चिकित्सकीय

आन्तरण गर्न चाहन्छन् भन्ने जरूरी छैन । चिकित्सकीय आन्तरण गर्दै नगर्न चाहन पनि सक्छन्, केही मात्र पनि गर्न चाहन सक्छन् । आफ्नो लैङ्गिक पहिचान अनुसार सामाजिक आन्तरण त गरिन्छ तर चिकित्सकीय आन्तरणहरूमा कुन-कुन गर्ने, कहिले गर्ने, कसरी गर्ने भन्ने निर्णय व्यक्तिको हुन्छ र यो व्यक्ति पिच्छे फरक हुन जान्छ ।

(१०) **"मृतनाम (Deadname)"** भन्नाले कुनै पनि व्यक्तिलाई शिशुवास्थामा आफ्नो अभिभावकले राखिदिएको त्यस नाम जुन नीजको लैङ्गिक पहिचान अनुरूप छैन वा नीजले त्यस नामबाट सम्बोधित हुन चाँहदैन भनी सम्झनु पर्छ । कुनै व्यक्तिलाई नीजको मृतनामबाट सम्बोधन गर्नु (Deadnaming someone) नीज प्रति अपमानजनक व्यवहार र दुर्व्यवहार हो ।

(११) **"लैङ्गिक दुस्बोधन (Misgender)"** भन्नाले कुनै पनि व्यक्तिलाई (विशेष गरी पारलैङ्गिक लगायतका लैङ्गिक अल्पसङ्ख्यक व्यक्तिहरूलाई) उनीहरूको लैङ्गिक पहिचान नझल्कने शब्दहरू वा उनीहरूले आफूलाई सम्बोधन गराउन चाहेको लैङ्गिक शब्दहरूको प्रयोग नगर्नू भनी सम्झनु पर्छ । उदाहरणका लागि : कुनै पारलैङ्गिक महिलाले आफूलाई Mam भनेर सम्बोधन गर्नु भन्दा भन्दै पनि Sir वा अन्य कुनै नमिल्दो शब्दले सम्बोधन गर्नु । लैङ्गिक दुस्बोधन पारलैङ्गिक लगायतका लैङ्गिक अल्पसङ्ख्यक व्यक्तिहरू प्रति गरिने अपमानजनक व्यवहार र दुर्व्यवहारको एउटा स्वरूप हो ।

(१२) **"पारद्वेषिता (Transphobia)"** भन्नाले लैङ्गिक पहिचानकै आधारमा पारलैङ्गिक व्यक्तिहरू प्रति घृणाको भावना भनी सम्झनु पर्छ ।

(विशेषण : पारद्वेषी Transphobic)

(१३) **"त्याचलैङ्गिक (Cisgender) "** भन्नाले जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल खाने लैङ्गिक पहिचान भएका व्यक्तिहरू हुन् भनी सम्झनु पर्छ । मूलतः हाम्रो समाजमा कुनै बच्चा लिंग लिएर जन्मन्छ भने त्यसलाई पुरुष र कुनै बच्चा योनी लिएर जन्मन्छ भने त्यसलाई महिला भन्ने सामाजिक मान्यता अनुरूप मेल खाने व्यक्तिहरूलाई जनाउने यो अर्को नाम हो । यस शब्दको उत्पत्ति हुनुको कारण भने महिला र पुरुषको परिभाषामा पारलैङ्गिक व्यक्तिहरूलाई समावेश गर्नका निम्ति हो । महिला भन्नाले त्याचलैङ्गिक महिला (योनी लिएर जन्मेका) मात्र बुझिने र पुरुष भन्नाले त्याचलैङ्गिक पुरुष (लिंग लिएर जन्मेका) मात्र बुझिने भएकाले पारलैङ्गिक महिला तथा पुरुषहरू पनि महिला र पुरुषको परिभाषा अन्तर्गत पर्दछ भनी जनाउन यो शब्दको विकास भएको हो । त्यसै गरी आफ्नो जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल खाने लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई जनाउने शब्द नहुँदा यी व्यक्तिहरूलाई "सामान्य मान्छे" र "नर्मल मान्छे"

भनेर जनाइने हुँदा अरु विविध लैङ्गिकताहरू अन्यकरण वा अपवादिकरण भएकाले पनि यो शब्दको विकास भएको हो ।

# पारलैङ्गिक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय प्रचलित मूल्य मान्यता व्यवस्थाको व्याख्या

## राष्ट्रिय मूल्यमान्यताहरूमा

**नेपालको संविधानको भाग—२** "१२. वंशीय आधार तथा लैंगिक पहिचान सहितको नागरिकता : यो संविधान बमोजिम वंशजको आधारमा नेपालको नागरिकता प्राप्त गर्ने व्यक्तिले निजको आमा वा बाबुको नामबाट लैंगिक पहिचान सहितको नेपालको नागरिकताको प्रमाणपत्र पाउन सक्नेछ"ले पनि यो विषयको सुनिश्चितता गरेको छ ।

**नेपालको संविधानको भाग— ३ मौलिक हक र कर्तव्य** १८. समानताको हक

**नेपालको संविधानको भाग— ३** १६. "सम्मानपूर्वक बाँच्न पाउने हक : (१) प्रत्येक व्यक्तिलाई सम्मानपूर्वक बाँच्न पाउने हक हुनेछ"

**सर्वोच्च अदालतले २०७३ साल माघमा यसै सम्बन्धी जारी गरेको परमादेश ०७०-WO-०२८७ मा उल्लेख गरिएका विषयहरू:**

- कुनै पनि व्यक्ति जैविक रुपमा जुनसुकै लिंग लिएर जन्मे पनि नीजको वास्तविक पहिचान भनेको नीजले व्यक्तिगत रुपमा गरिने लैङ्गिक अनुभूती सहितको पहिचान नै हो ।
- कुनै पनि व्यक्तिले आफ्नो पहिचान सहितको आत्मसम्मान पूर्वक बाँच्न पाउनु नीजको आधारभूत मानव अधिकारको विषय हो ।
- नागरिकता प्रमाण पत्रमा उल्लेख भएको लिङ्गको जस्तो लैङ्गिक अनुभूति नभई फरक अनुभूती भएको र आफ्नो अनुभूती भन्दा फरक पहिचानमा बाँच्नु र चिनिनु पर्दा आफ्नो आत्मसम्मानमा चोट पुग्न गई अपमानित भएको महसुस गरेको देखियो ।

– लैंगिक अल्पसङ्ख्यक समुदायहरू आफ्नो वास्तविक पहिचान भन्दा फरक परिचयपत्रका साथ रहन पर्दा आत्मसम्मानमा चोट पुग्नुका साथै सामाजिक अपनत्वलाई समेत कमजोर तुल्याउने हुन्छ ।

– कतिपय अवस्थामा आफ्नो लैंगिक पहिचान ढिलो गरी मात्र थाहा पाउने र व्यक्त गर्न सक्ने हुँदा यस्तो अवस्थामा पहिले शारीरिक जैविक अंगको आधारमा पाएको नागरिकता प्रमाण पत्र संसोधन गर्न पाउने अधिकार कानूनतः सुरक्षित गर्नुपर्ने नै देखियो ।

– लैङ्गिक पहिचान भन्नाले हरेक व्यक्तिको भित्री मनबाट आएको अनुभूति र लिङ्ग सम्बन्धी व्यक्तिगत अनुभव जुन जन्मदाको जैविक लिङ्गभन्दा विपरीत वा सो प्रतिकूल अन्य पहिरन बोली र व्यवहारबाट व्यक्त गरिने फरक लैङ्गिक अनुभूती सम्झनु पर्दछ ।

– कुनै पनि व्यक्तिले आफ्नो स्व अनुभूती अनुसारको लैङ्गिक पहिचान हासिल गर्नु निजको नितान्त वैयक्तिक आत्मनिर्णयको अधिकार अन्तर्गतको विषय हो । यसमा अरु व्यक्ति समाज राज्य वा कानूनले जैविक लिङ्ग के हो भनी निर्धारण गर्नु सान्दर्भिक हुँदैन ।

**वैयक्तिक गोपनीयता सम्बन्धी ऐन, २०७५ - परिच्छेद-२ व्यक्तिको जीउ तथा पारिवारिक गोपनीयता :**

३. व्यक्तिको शारीरिक तथा निजी जीवनको गोपनीयताः

(१) प्रत्येक व्यक्तिको शारीरिक र मानसिक अवस्था सम्बन्धी विषयको गोपनीयता अनतिक्रम्य हुनेछ।

(२) कुनै पनि व्यक्तिको शारीरिक गोपनीयताको विषय निजको शरीर वा स्वास्थ्य परीक्षण गर्दा, उपचार गर्दा वा आपतकालीन उद्धार कार्य गर्दाको अवस्थामा बाहेक सम्बन्धित व्यक्तिको मञ्जुरीविना अनतिक्रम्य रहनेछ।

(३) कुनै पनि व्यक्तिलाई निजको निजी जीवनसँग सम्बन्धित जैविक वा आनुवंशिक पहिचान, लैङ्गिक पहिचान, यौनिकता, यौन सम्बन्ध, गर्भाधान वा गर्भपतन, कुमारीत्व, पुरुषत्व, नपुंशकत्व वा शारीरिक रोग जस्ता विषयको गोपनीयता कायम राख्ने अधिकार हुनेछ। (४) कसैले कुनै पनि व्यक्तिको निजी जीवनमा असर पर्ने, आघात पुग्ने वा बेइज्जत हुने गरी त्यस्तो व्यक्तिसँग सम्बन्धित उपदफा (३) बमोजिमका कुनै पनि विषय लेखेर, बोलेर, प्रकाशन गरेर वा विद्युतीय माध्यम प्रयोग गरेर वा अन्य कुनै पनि प्रकारले सार्वजनिक गर्नु वा गराउनु हुँदैन ।

**कानून-तर्जुमा-दिग्दर्शन :** परिच्छेद- २ कानूनी वाक्य संरचना - २.१.२३ अमर्यादित र हीनताबोधक शब्दको प्रयोग नगर्ने कुनै पनि धर्म, वर्ण, लिङ्ग, जातजाति, क्षेत्र, उमेर समूह आदिलाई होच्याउने,अपमान गर्ने शब्दको प्रयोग गर्नु हुँदैन । यस्तै अमर्यादित, अश्लिल, हेपाहा अपमानजनक र गालीबोधक शब्दको प्रयोग गर्नु हुँदैन । सामाजिक कुरीति, कुसंस्कार जनाउने, रूढिवादिता जस्ता कुरालाई प्रोत्साहित गर्ने, सामाजिक विखण्डन, फुट पैदा गर्ने, द्वेष, घृणा उत्पन्न हुने, आक्रमक भाषा शैलीको प्रयोग गर्नु हुँदैन ।

## अन्तर्राष्ट्रिय मूल्यमान्यताहरूमा

**American Psychological Association.** (2015). Guidelines for Psychological Practice with Transgender and Gender Nonconforming People. American Psychologist, 70(9), 832-864. doi.org/10.1037/a0039906 मा यी परिभाषाहरू उल्लेख छ : (https://www.apa.org/topics/lgbt/transgender)

१) Cisgender: An adjective used to describe a person whose gender identity and gender expression align with sex assigned at birth; a person who is not TGNC.

२) Gender Identity: A person's deeply-felt, inherent sense of being a boy, a man, or male; a girl, a woman, or female; or an alternative gender (e.g., genderqueer, gender nonconforming, gender neutral) that may or may not correspond to a person's sex assigned at birth or to a person's primary or secondary sex characteristics. Since gender identity is internal, a person's gender identity is not necessarily visible to others. "Affirmed gender identity" refers to a person's gender identity after coming out as TGNC or undergoing a social and/or medical transition process.

३) Transgender: An adjective that is a umbrella term used to describe the full range of people whose gender identity and/or gender role do not conform to what is typically associated with their sex assigned at birth. While the term "transgender" is commonly accepted, not all TGNC people self-identify as transgender.

**American Psychological Association & National Association of School Psychologists.** (2015). Resolution on gender and sexual orientation diversity in children and adolescents in schools मा यी परिभाषाहरू उल्लेख छ :

१) Cisgender replaces the terms "nontransgender" or "bio man/bio woman" to refer to individuals who have a match between the gender they were assigned at birth, their bodies and their gender identity (Schilt & Westbrook, 2009).

२) Gender identity refers to one's sense of oneself as male, female or something else (APA, 2011). When one's gender identity and biological sex are not congruent, the individual may identify along the transgender spectrum (APA, 2012; Gainor, 2000).

३) Transgender is an umbrella term that incorporates differences in gender identity wherein one's assigned biological sex doesn't match their felt identity. This umbrella term includes persons who do not feel they fit into a dichotomous sex structure through which they are identified as male or female. Individuals in this category may feel as if they are in the wrong gender, but this perception may or may not correlate with a desire for surgical or hormonal reassignment (Meier & Labuski, 2013).

American Psychological Association. (2015). **APA dictionary of psychology मा** यी परिभाषाहरू उल्लेख छ :

१) Cisgender (Adj.): having or relating to a GENDER IDENTITY that corresponds to the culturally determined gender roles for one's birth sex (i.e., the biological sex one was born with.) a cisgender man or cisgender woman is thus one whose internal gender identity matches, and presents itself in accordance with, the externally determined cultural expectations of the behavior and roles considered appropriate for one's sex as male or female.

२) Gender Identity: one's self identification as male or female. Although the dominant approach in psychology for many years had been to regard gender identity as residing in individuals, the important influence of societal structures, cultural expectations, and personal interactions in its development is now recognized as well. Significant evidence now exists to support the conceptualization of gender identity as influenced by both environmental and biological factors.

Ontario Human Rights Commission को **Policy on preventing discrimination because of gender identity and expression** अनुसार :-

१) Gender identity is each person's internal and individual experience of gender. It is their sense of being a woman, a man, both, neither, or anywhere along the gender spectrum. A person's gender identity may be the same as or different from their birth-assigned sex. Gender identity is fundamentally different from a person's sexual orientation. (Chapter 3)

२) "Transphobia" is the aversion to, fear or hatred of trans people and communities. Like other prejudices, it is based on stereotypes that are used to justify discrimination, harassment and violence toward trans people. (Chapter 4.2)

३) "Cisnormativity" ("cis" meaning "the same as") refers to the commonplace assumption that all people are "cisgender" (not trans). In other words, their gender identity is in line with or "matches" the sex they were assigned at birth, and everyone accepts this as "the norm." (Chapter 4.3)

http://www.ohrc.on.ca/en/policy-preventing-discrimination-because-gender-identity-and-gender-expression

Ontario Human Rights Commission को **Policy on discrimination and harassment because of gender identity** अनुसार 4. What is gender identity? Gender identity is linked to an individual's intrinsic sense of self and, particularly the sense of being male or female. Gender identity may or may not conform to a person's birth-assigned sex. The personal characteristics that are associated with gender identity include self-image, physical and biological appearance, expression, behaviour and conduct, as they relate to gender. At birth, a child is assigned a gender by a health care professional based on observation of the child's genitalia. Society makes the assumption that based on this medical assessment a child will grow up to exhibit correspondingly masculine or feminine behaviours and appearances. However, this is not always the case. A person's felt identity or core identity may differ in part or in whole from their birth assigned sex.

http://www.ohrc.on.ca/sites/default/files/Policy_on_discrimination_and_harassment_because_of_gender_identity.pdf

संयुक्त राष्ट्र संघ अमेरिकाको **क्यालिफोर्निया राज्यमा लैङ्गिक पहिचानको मान्यता** सम्बन्धी Senate Bill No. 179 CHAPTER 853 मा यी विषयहरू उल्लेख गरिएको छ :

१) This bill would enact the Gender Recognition Act. For purposes of obtaining a new birth certificate under the provisions above, the bill would delete the requirement that an applicant have undergone any treatment, and instead would authorize a person to submit to the State Registrar an application to change gender

on the birth certificate and an affidavit attesting, under penalty of perjury, that the request for a change of gender is to conform the person's legal gender to the person's gender identity and not for any fraudulent purpose. By requiring the affidavit to be attested to under penalty of perjury, the bill would create a crime, thereby imposing a state-mandated local program. The bill would authorize the change of gender on a new birth certificate to be female, male, or nonbinary.

२) SEC. 2. The Legislature finds and declares all of the following:
(a) It is the policy of the State of California that every person deserves full legal recognition and equal treatment under the law and to ensure that intersex, transgender, and nonbinary people have state-issued identification documents that provide full legal recognition of their accurate gender identity.
(b) Gender identification is fundamentally personal, and the state should endeavor to provide options on state-issued identification documents that recognize a person's accurate gender identification. It is the intent of the Legislature in enacting this legislation to provide three equally recognized gender options on state-issued identification documents—female, male, and nonbinary—and an efficient and fair process for people to amend their gender designation on state-issued identification documents so that state-issued identification documents legally recognize a person's accurate gender identification.
(e) Transgender is an umbrella term used to describe people whose gender identity or gender expression do not match the gender they were assigned at birth. Some transgender people have medically transitioned, undergoing gender affirming surgeries and hormonal treatments, while other transgender people do not choose any form of medical transition. There is no uniform set of procedures that are sought by transgender people that pursue medical transition.

https://leginfo.legislature.ca.gov/faces/billNavClient.xhtml?bill_id=201720180SB179

**New York City Commission on Human Rights Legal Enforcement Guidance on Discrimination on the Basis of Gender Identity or Expression**: Local Law No. 3 (2002); N.Y.C. Admin. Code § 8-102 अनुसार :

१) Cisgender. "Cisgender" is a term used to describe a person whose gender identity conforms with their sex assigned at birth.

२) Gender identity. "Gender identity" is the internal deeply-held sense of one's gender which may be the same as or different from one's sex assigned at birth. A person's gender identity may be male, female, neither or both, i.e., non-binary or genderqueer. Gender identity is not the same as sexual orientation or gender expression. Terms associated with gender identity include, but are not limited to,

agender, bigender, butch, female/woman/feminine, female to male (FTM), femme, gender diverse, gender fluid, gender queer, male/man/masculine, male to female (MTF), man of trans experience, pangender, or woman of trans experience.

३) Transgender. "Transgender"—sometimes shortened to "trans"—is a term used to describe a person whose gender identity does not conform with the sex assigned at birth.

## लैङ्गिक दुस्बोधन सम्बन्धीको व्यवस्था

1. Failing To Use the Name or Pronouns with Which a Person Self-Identifies

The NYCHRL requires employers and covered entities to use the name, pronouns, and title (e.g., Ms./Mrs./Mx.)15 with which a person self-identifies, regardless of the person's sex assigned at birth, anatomy, gender, medical history, appearance, or the sex indicated on the person's identification.

Most people and many transgender people use female or male pronouns and titles. Some transgender, non-binary, and gender non-conforming people use pronouns other than he/him/his or she/her/hers, such as they/them/theirs or ze/hir.16 They/them/theirs can be used to identify or refer to a single person (e.g., "Joan is going to the store, and they want to know when to leave"). Many transgender, non-binary, and gender non-conforming people use a different name than the one they were assigned at birth.

All people, including employees, tenants, customers, and participants in programs, have the right to use and have others use their name and pronouns regardless of whether they have identification in that name or have obtained a court-ordered name change, except in very limited circumstances where certain federal, state, or local laws require otherwise (e.g., for purposes of employment eligibility verification with the federal government). Asking someone in good-faith for their name and gender pronouns is not a violation of the NYCHRL.

Covered entities may avoid violations of the NYCHRL by creating a policy of asking everyone what their gender pronouns are so that no person is singled out for such questions and by updating their systems, intake forms, or other questionaires to allow all people to self-identify their name and gender. Covered entities should not limit the options for identification to male and female only.

**Examples of Violations**

a. Intentional or repeated refusal to use a person's name, pronouns, or title. For example, repeatedly calling a transgender woman "him" or "Mr." after she has made clear that she uses she/her and Ms.

b. Refusal to use a person's name, pronouns, or title because they do not conform to gender stereotypes. For example, insisting on calling a non-binary person "Mr." after they have requested to be called "Mx."

c. Conditioning a person's use of their name on obtaining a court-ordered name change or providing identification in that name. For example, a covered entity may not refuse to call a transgender man who introduces himself as Manuel by that name because his identification lists his name as Maribel.17

d. Requiring a person to provide information about their medical history or proof of having undergone particular medical procedures in order to use their preferred name, pronouns, or title.

https://www1.nyc.gov/site/cchr/law/legal-guidances-gender-identity-expression.page

**संयुक्त राष्ट्र संघकोले जारी गरेको पारलैङ्गिक तथ्यपत्र (Transgender Fact Sheet)** अनुसार

"Gender identity refers to person's experience of their own gender. Transgender people have a gender identity that is different from the sex they were assigned at birth" भनी पारलैङ्गिक व्यक्तिहरूलाई परिभाषित गरिएको छ । संयुक्त राष्ट्र संघको Free and Equal Campaign (लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक सम्बन्धीको एक अभियान)को व्याख्या अनुसार "Transwoman identify as women but were classified as males when they were born, transmen identify as men but were classified as female when they were born" भनी उल्लेख गरिएको छ ।

https://www.unfe.org/wp-content/uploads/2017/05/UNFE-Transgender.pdf

विश्व स्वास्थ्य संगठनको **FAQ on Health and Sexual Diversity : An Introduction to Key Concepts** मा पनि सोही विषय उल्लेख छ, "Transwomen identify as women but were assigned as males when they were born, transmen identify as men but were assigned female when they were born" ।

https://www.who.int/gender-equity-rights/news/sexual-gender-diversity-faq.pdf

November 15, 2017 मा World Professional Association for Transgender Health को **WPATH Identity Recognition Statement** यस प्रकारको छ :

> The World Professional Association for Transgender Health (WPATH) recognizes that, for optimal physical and mental health, persons must be able to freely express their gender identity, whether or not that identity conforms to the expectations of others. WPATH further recognizes the right of all people to identity documents consistent with their gender identity, including

those documents which confer legal gender status. Such documents are essential to the ability of all people to enjoy rights and opportunities equal to those available to others; to access accommodation, education, employment, and health care; to travel; to navigate everyday transactions; and to enjoy safety. Transgender people, regardless of how they identify or appear, should enjoy the gender recognition all persons expect and deserve.

Medical and other barriers to gender recognition for transgender individuals may harm physical and mental health. WPATH opposes all medical requirements that act as barriers to those wishing to change legal sex or gender markers on documents. These include requirements for diagnosis, counseling or therapy, puberty blockers, hormones, any form of surgery (including that which involves sterilization), or any other requirements for any form of clinical treatment or letters from doctors. WPATH argues that marital and parental status should not be barriers to recognition of gender change, and opposes requirements for persons to undergo periods living in their affirmed gender, or for enforced waiting or 'cooling off' periods after applying for a change in documents. Further, court and judicial hearings can produce psychological, as well as financial and logistical barriers to legal gender change, and may also violate personal privacy rights or needs.

WPATH advocates that appropriate gender recognition should be available to transgender youth, including those who are under the age of majority, as well as to individuals who are incarcerated or institutionalized. WPATH recognizes that there is a spectrum of gender identities, and that choices of identity limited to Male or Female may be inadequate to reflect all gender identities. An option of X, NB (non-binary), or Other (as examples) should be available for individuals who so choose.

WPATH urges governments to eliminate barriers to gender recognition, and to institute transparent, affordable and otherwise accessible administrative procedures affirming self-determination, when gender markers on identity documents are considered necessary. These procedures should be based in law and protect privacy.

https://www.wpath.org/media/cms/Documents/Web%20Transfer/Policies/WPATH%20Identity%20Recognition%20Statement%2011.15.17.pdf

## संयुक्त राष्ट्र संघका महत्वपूर्ण प्रतिवेदन र त्यसका सुझावहरू

1. Protection against violence and discrimination based on sexual orientation and gender identity (A/73/152) https://undocs.org/en/A/73/152

2. Report of the Special Rapporteur on the right to privacy (A/HRC/43/52) https://www.ohchr.org/EN/HRBodies/HRC/RegularSessions/Session43/Documents/A_HRC_43_52_AdvanceUneditedVersion.docx

## अन्तर्राष्ट्रिय सिद्दान्तहरू

1. Yogyakarta Principles : https://yogyakartaprinciples.org/

सन् २००६ मा इन्दोनेसियाको योग्याकार्ता शहरमा अन्तर्राष्ट्रिय मानव अधिकार विशेषज्ञहरूको भेला भएर यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (Sexual orientation, Gender identity and sex characteristics : SOGIESEC) सम्बन्धी अन्तर्राष्ट्रिय मानव अधिकार मापदण्डहरू संहिताकरण गरिएको थियो । सन् २०१७ मा अझै व्यापक विषयवस्तु समावेश गरी यस सिद्दान्तको पुनरावलोकन गरी Yogyakarta +10 जारी भएको थियो ।

# मागपत्र जारी बारे पृष्ठभूमी

**क्वयेर युथ ग्रुप (Queer Youth Group) :** लैङ्गिक तथा यौनिक विविधताका क्षेत्रमा काम गर्ने लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक अथवा क्वयेर युवाहरूको अनौपचारिक समूह र फुक्का संजालका रूपमा सन् २०१८ डिसेम्बरमा यस समूहको संचालन भयो । अनौपचारिक समूहकै रूपमा रहे पनि क्वयेर युथ ग्रुपको उद्देश्य, दृष्टि, कार्यक्षेत्र, सरोकारवाला समुदाय, सिद्दान्त तथा मूल्य मान्यताहरू सहित "साझा समझदारीको दस्तावेज" (Document of common understanding) बनाएर यस समूहको कार्यलाई अगाडी बढाइएको हो । क्वयेर युथ ग्रुपले मुख्यतः लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक अथवा क्वयेर विविधता बारे कानुनी तथा नीतिगत वकालत र पैरवी, जनचेतना फैलाउने गतिविधिहरू, स्रोत साधन सामाग्री निर्माण गर्ने (अनलाइन र पुस्तक प्रकाशन), ज्ञान सृजना (Knowledge Generation) र अनुसन्धान गर्ने, अङ्ग्रेजी भाषामा व्यापक भएका स्रोत सामाग्रीहरू नेपालका राष्ट्रिय भाषाहरूमा अनुवाद गर्ने, क्वयेर युवाहरू बीच विभिन्न मुद्दाहरूमा छलफल र डिस्कोर्स चलाउने, र सार्वजनिक कार्यक्रम र गोष्ठी संचालन गर्ने काम गर्दै आएको छ । क्वयेर युथ ग्रुपले लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक अथवा क्वयेर व्यक्तिहरूका क्षेत्रमा काम गर्दा अरु सामाजिक उत्पीडन जस्तै जातीय, क्षेत्रीय, भाषिक, आर्थिक, अपाङ्गता, इत्यादी विषयहरूको अन्तर सम्बन्धलाई पनि मध्यनजरमा राख्दछौं । हाम्रो स्रोत सामाग्रीहरू दृष्टिविहीन व्यक्तिहरू र न्यून दृष्टि भएका व्यक्तिहरूलाई पनि पहुँचयुक्त, विशेष गरी नेपाली र नेपालभाषा लगायत अरु राष्ट्रिय भाषाहरूमा स्रोत साधन निर्माण गर्छौं । सन् २०२० मा क्वयेर युथ ग्रुप मुनाफा रहित

(Not-for-profit) को रूपमा दर्ता हुने प्रकृयामै रहँदा कोरोना माहामारीका कारण उक्त कार्य स्थगित भएको हो ।

**पारलैङ्गिक अधिकार समूह (Trans Rights Collective) :** पारलैङ्गिक मागपत्रकै विषयमा छलफल गर्ने क्रममा पारलैङ्गिक युवाहरूको यो अनौपचारिक समूह गठन भएको थियो । पारलैङ्गिक सरोकारका विषयहरूमा छलफल गरी सार्वजनिक विज्ञप्ती निकाल्ने र एक अर्कालाई आवश्यकता पर्दा सहयोग गर्ने समूहका रूपमा सुरु भएको हो । भविष्यमा अझै स्पष्ट हुँदै जाने र यो मागपत्र जारी गर्दा बखत यो समूह अझै प्रारम्भिक शिशुवास्थामै छ ।

## पृष्ठभूमी

नेपालमा पारलैङ्गिक व्यक्तिहरूलाई कुनै मान्यता छैन । पारलैङ्गिक व्यक्तिहरू सम्बन्धी कुनै कानुन वा प्रावधान पनि छैन । पारलैङ्गिक व्यक्तिहरूका विषय वस्तुलाई सही ढङ्गले सम्बोधन गर्ने कानुनको अभावमा पारलैङ्गिक व्यक्तिहरूको जीवनमा प्रतिकूल असर पुगेको सर्वव्यापी नै छ । क्वयेर युथ ग्रुप पनि यसै क्षेत्रमा काम गर्ने र यसका पारलैङ्गिक सदस्यहरूले पारलैङ्गिक केन्द्रित छलफल चलाई पारलैङ्गिक मुद्दाहरू बारे सरकारको ध्यानाकर्षण गरी आवश्यक कानुन बनाउनमा जोड दिनुपर्छ भन्ने कुरा आएपछि सामाजिक संजालबाट अरु पारलैङ्गिक व्यक्तिहरूसँग reach out गर्ने प्रयास गरियो । सन् २०१९ को सुरुवातमा आफ्नो सामाजिक संजालको सम्पर्कमा रहेको, ती व्यक्तिहरूको सम्पर्कमा रहेका अन्य व्यक्तिहरू गर्दै बिस्तारी पारलैङ्गिक युवाहरू प्रति सम्पर्क बढ्न थालेको हो । सम्पर्क बढाउन नै झण्डै ६ महिना लागेपनि सामाजिक संजालकै प्रयोगले नेपालका सातै प्रदेशहरूमा बसोबास गर्ने पारलैङ्गिक व्यक्तिहरूसँग सम्पर्क भयो ।

केही संख्याको सम्पर्का पुगिसकेपछी group chat को निर्माण गरी कुराकानी हुन थाल्यो । आफू पारलैङ्गिक भएकै कारण जीवनका विभिन्न पक्षहरूमा भोगेका दुःख, पीडा, विभेद र लाञ्छनाका कुराहरू र आफ्नो मनका वह भावनाहरू साटासाट भयो । हाम्रो कुराकानीहरू सनै अनलाइनकै माध्यमबाट भयो । टेक्सट, भिडियो कल, अडियो कल, इत्यादी मार्फत हाम्रो सरोकारका विषयवस्तुमा छलफ गर्दै जाँदा आफूले चाहेको पहिचानमा नागरिकता र कागजपत्र बनाउन नपाएकोमा भोग्नुपरेको समस्याहरू बारेमा छलफल हुन पुग्यो । त्यसपछी यसै विषयमा रहेर केही काम गर्ने निर्णय समूहले गरेपछी एउटा मागपत्र वा ज्ञापन पत्र बनाउने भन्ने कुरा आएको थियो ।

यसै कुरामा हरेक हप्ता जस्तै छलफलहरू हुन थाल्यो र गुगल डक मार्फत मागपत्र लेखनको कार्य पनि अगाडी बढ्यो । पारलैङ्गिक व्यक्तिहरूका जीवनमा महत्व राख्ने विभिन्न सरोकारका विषयहरूमा छलफल हुँदै लगभग एउटा निष्कर्स सम्म आइपुग्यो । छलफल गरेको लगभग ६ महिना बित्दै सन् २०२० लाग्दा हरेक वर्ष हुने मार्च ३१ - अन्तर्राष्ट्रिय पारलैङ्गिक दृश्यताको दिवसमा एउटा भेला गरी यस मागपत्रको अन्तिम विधयकमा निकाली जारी गर्ने योजना बन्न पुग्यो । यो कार्यक्रम क्वयेर युथ ग्रुपको सामाजिक संजालमा राखी पारलैङ्गिक व्यक्तिहरूलाई सार्वजनिक आमन्त्रणा पनि गरियो । त्यसै क्रममा अनलाइन छलफल हुने र गुगल डकमा मागपत्र सम्पादन हुने प्रकृया जारी नै थियो ।

विश्वव्यापी माहामारीका रूपमा फैलँदै गरेको कोरोना भाइरसको त्रास बढे लगतै यो अवस्था अझै गम्भीर भएको अझ यो बढ्दै गएमा सार्वजनिक भेला गर्न नहुने स्थिति हुन सक्छ भनी यो कार्यक्रमलाई मार्च ७ का दिन सार्ने निर्णय गरियो । त्यस बेला पनि मार्च ८ मा हुने महिला दिवसका कार्यक्रमहरू पनि स्थगित हुँदै थियो र अवस्था झनै नाजुक हुन सक्ने देखिएपछी अघि सारेको यो कार्यक्रम काठमाडौंको थापाथली स्थित तान नेपालको कार्यालयमा सम्पन्न भयो ।

उक्त कार्यक्रममा २४ जना सहभागीहरू थिए जसमा १३ जना पारलैङ्गिक पुरुषहरू थिए र ११ जना पारलैङ्गिक महिलाहरू थिए ।उनीहरू काठमाडौं, भक्तपुर, ललितपुर, रुपन्देही, कास्की, कैलाली, मकवानपुर, झापा, चितवन, हुम्ला, नुवाकोट, काभ्रे, रसुवा, मोरङ, बाग्लुङ, सर्लाही, बारा र सुनसरी जिल्लाबाट थिए ।उक्त कार्यक्रममा सबैजनाको उत्साहजनक सहभागिता थियो । नेपालमा पारलैङ्गिक व्यक्तिहरूको अवस्था, कानुन तथा नीतिहरू नभएको वा मैत्रीपूर्ण नभएको कारण दिनहुँ भोग्नुपर्ने समस्या, समाजको लाञ्छना र विभेदका कारण दिनहुँ भोग्नुपर्ने मानसिक तनाव, समाजले पारलैङ्गिक व्यक्तिहरू प्रति गर्ने विभिन्न प्रकारका हिंसाहरूको बारेमा छलफल भयो । उक्त कार्य्रक्रममा केही व्यक्तिहरूले आफ्नो लैङ्गिक पहिचान स्वःअनुभूती बारे आफ्नो जीवनको यात्राका कथाहरू पनि सुनाए । त्यसबखत माहोल भावुक पनि भएको थियो ।

कुराकानीको यही सिलसिलामा कार्यक्रमको विषय केन्द्रित भएर छलफल भयो । लैङ्गिक पहिचानको मान्यता सबैको जीवनमा कतिको महत्वपूर्ण छ भन्ने विषयमा छलफल भयो । छलफलमा व्यक्तिहरूको वैयक्तिक जीवन, व्यवहारिकता, गोप्यनियता, सामाजिक सुरक्षा लगायतका विभिन्न दृष्टिकोणबाट कुराकानी भयो ।

*"आफ्नो लैङ्गिकता महिला भएपनि sex assigned at birth को आधारमा पुरुष भनी लिखिदिएको छ । महिला लेखेर नागरिकता पनि बनाउन नमिल्ने । नाम पनि फेर्न मिलेको छैन । आफू महिलाको लैङ्गिकतामा जीवनयापन गरेको १० वर्ष बितिसक्दा पनि पहिचान अनुसार नागरिकता र सबै सर्टिफिकेटहरू परिवर्तन गर्न नपाउँदा व्यवहारिक समस्याहरू अत्यन्तै उत्पन्न भएको छ । कतिपय अवस्थामा त मलाई यो मेरो सर्टिफिकेट नै होइन भनेको छ । यही कारण मैले जागिर पनि पाएको छैन । अहिले म ठेला गाडामा गुजारा गर्छु ।"*

*- झापाका एक पारलैङ्गिक महिला*

*"मेरो Lived Gender पुरुष हो तर sex assigned at birth आधारमा महिला लेखेको महिलाको नाम भएको नागरिकता बोक्नुपर्ने हुँदा मैले सकेसम्म नागरिकता कतै पेश गर्नुपर्ने होस् नै चाहन्छु । मलाई म पारलैङ्गिक भएको विषय खुलाउन मन छैन । यो नितान्त मेरो personal life को कुरा हो । यसमा समाज राज्यले चासो वा दखल नदिँदा हुन्थ्यो । यही कारणले मैले मेरो अत्यन्तै इच्छा भएको क्षेत्र IT Tech पनि त्याग गर्न बाध्य भएँ । अब त्यही मेरो घरमा सानो पसल राखेर बस्छु । म त आमा बुबाबाट छुटेको नै ७ वर्ष भैसक्यो । आफ्नै घर छ । अरु मान्छेहरूसँग बोलीचाली राख्दिनँ । त्यही मेरो घर सम्बन्धी मालपोतमा केही आइपर्दा फेरी नागरिकताले दिक्क गर्ने हो कि भन्ने मात्र डर छ । अरु इच्छाहरू त मैले मारिसकें । नेपालमा कहिले बन्ला कानुन, शायद हामी मरिसकेपछी होला । "*

*- ललितपुरका एक पारलैङ्गिक पुरुषले भावुक हुँदै भने*

हाम्रो सामाजिक मूल्य मान्यता अनुसार कुनै बच्चा जन्मन बित्तिकै उसको यौनाङ्ग हेरेर उसको लैङ्गिकता निर्धारण गरिन्छ । कुनै बच्चाको लिंग हुन बित्तिकै उसलाई छोरा वा केटा अनि कुनै बच्चाको योनी हुन बित्तिकै उसलाई छोरी वा केटी भनेर हुर्काइन्छ । नाम पनि त्यसै अनुसार राखिन्छ । त्यो नाम जन्म दर्तामा अभिलेख भएपछी विद्यालय भर्ना गर्दा पनि सोही नाम लागु हुन्छ । समाजको यही अपेक्षा भन्दा ठीक विपरीत अनुभव गर्दै गर्दा ती व्यक्तिहरूको जीवन अनुभव अरु व्यक्तिहरू भन्दा भिन्न बनाइन्छ, समाज र राज्यको कानुन दुबैले ।

कुनै व्यक्तिले आफू त्यसरी समाजको अपेक्षा भन्दा विपरीत छु भनेर सानै उमेर देखि अनुभव गरेतापनि कुन उमेरमा उ स्वःविश्वस्त हुन्छ र आफूलाई पारलैङ्गिक भनेरै पहिचान गर्दछ भन्ने व्यक्ति पिच्छे भर पर्छ । यो नीजको सामाजिक र आर्थिक परिवेशले निर्धारण गर्दछ । कतिपय व्यक्तिहरू जो यस्ता विषय बारे बुझेको घरपरिवारमा जन्मछन् र सानै देखि नै लैङ्गिक विविधता बारे ज्ञानसँग प्रत्यक्षित भएको हुन्छ, उनीहरूलाई अक्सर ६/७ वर्ष जतिकै सानै उमेरमा आफ्नो लैङ्गिक पहिचान प्रति स्वःविश्वस्त हुन्छ भने कतिपय मानिसहरू आफ्नो अनुभवले गर्दा आफू अन्योलतामा पर्छन् र धेरै उमेर पछि मात्र स्वःविश्वस्त हुन्छन् । एउटा उदाहरण के हुन सक्ला भने, ती व्यक्तिहरू जो शहरमा बस्छन् र इन्टरनेटमा व्यापक स्रोत सामाग्रीको पहुँच छ, उनीहरूलाई तुलनात्मक रूपमा यसबारे स्वःशिक्षित हुन सजिलो हुन्छ, जब कि कुनै विकट ग्रामीण क्षेत्रमा बसोबास गर्ने जसलाई रेडियो पहुँच नै राम्ररी छैन । आफ्नो मनमा अनुभव भएतापनि हाम्रो समाजमा यस्ता विषय बारे कुरा नगरिने, गरेतापनि लाञ्छनायुक्त ढङ्गले कुरा गर्ने र खासै यसबारे राम्ररी जन्न स्रोत सामाग्रीहरू पनि अभाव भएकाले नीज स्वःविश्वस्त हुने कुरामा प्रभाव पार्दछ । यी विषयमा स्रोत सामाग्रीहरू सानै देखि अध्ययन गरेका र यस बारे राम्रो जानकारी भएका व्यक्तिहरू सानै उमेरमा आफ्नो अनुभूती मूल्यांकन गरी स्वःविश्वस्त हुन्छन् भने यस बारे खासै केही नसुनेका व्यक्तिहरूले स्वःअनुभव गरेतापनि "म किन यस्तो भएको होला", "म मात्र किन यस्तो होला, "मलाई केही भएको पो हो कि" भनेर अन्योलतामा परी स्वःविश्वस्त हुन समय लाग्न सक्छ ।

स्वःविश्वस्त हुँदैमा तु आफ्नो लैङ्गिक पहिचान सबै सामु खुलाउँछ भन्ने जरूरी छैन । नीजको लागि नीजको दाजु-भाइ दिदी-बहिनीसँग यो कुरा गर्न सुरक्षित महसुस भए उनीहरूलाई खुलाउलान् वा आमा-बुबालाई भन्न सुरक्षित महसुस गरे उनीहरूलाई खुलाउलान् वा साथी-भाई जो पनि हुन सक्छ । यो कसरी खुलाउँछन् , कहिले खुलाउँछन् र कसलाई खुलाउँछन् भन्ने विषय नीजकै व्यक्तिगत परिस्थितिहरूको जटिलतामा निर्भर गर्छ । कोही शायद परिवारको समर्थन पाउँछ भन्ने लागेर सानै उमेरमा पहिचान खुलाउलान्, कोही शायद परिवारले स्वीकार्दैन त्यसैले आर्थिक आत्मनिर्भरता प्राप्त भएपछी मात्र खुलाउँछु भन्छन् होलान् । आफ्नो पहिचान खुलाउने सम्बन्धी व्यक्तिको नीजि परिस्थितिको जटिल अवस्था हेरेर नीजले आफूलाई अनुकूल हुने गरी गर्ने विषय हो ।

*"६ महिना अगाडी गाउँ समितिको बैठकमा बोलाएर गएका नागरिकता लाइनमा दिएर गएछु । झट्ट सबै अगाडी कृष्ण प्रसाद भनेर बोलायो, के गरूँ गरूँ भई जुरुक्क उठेको त सबैले यस्तो नराम्ररी हेरेर कुरा काट्न थाल्यो ।*

*त्यसपछी त कहिल्यै गइँन । अब त नागरिकता खै भन्दा, छैन नै भन्दिन्छु सिधै । आफू सँगै नमिल्ने नागरिकता बोकेर मात्र के हुँदो हो त"*

*- कास्कीका एक पारलैङ्गिक महिला*

*"Bachelor भर्ना त भएँ । exam दिन जाँदा गाह्रो हुन्छ । केटीको नामै राखेको छ Female भनेर लेखेको छ । आफूलाई त एकदमै लाग लाग्छ । यस्तो ID त देखाउनै नपरे हुन्थ्यो जस्तो लाग्छ तर के गरूँ खै?"*

*- हेटौँडाका एक पारलैङ्गिक पुरुष*

कुनै व्यक्तिको नाम के रहन्छ भन्ने विषयमा नेपालको कानुन अझै संकीर्ण र पुरातनवादी छ । कुनै एउटा बच्चा जन्मन बित्तिकै नीजलाई अभिभावकले राखिदिएको नाम नीजको जन्म दर्तामा उल्लेख हुन्छ, सोही नाम विद्यालयमा उल्लेख गर्दै, नागरिकतामा र नीजको जीवनभर नै सोही नाम चलाउनु पर्ने र अरु कुनै विकल्प नरहेको बाध्यकारी व्यवस्थाले पारलैङ्गिक जनसंख्यालाई अझै मर्कामा परेको छ । जसरी यौनाङ्गको आधारमा छोरा वा छोरी निर्धारण गरी पुरुष वा महिला उल्लेख गरी जन्म दर्ता गरी सोही अनुसारको प्रमाणपत्रहरू बनाइन्छ, सोही अनुरूप मानिसहरूको नाम राखिन्छ । हाम्रा कतिपय समाजहरूमा नामको लैङ्गिकता हुन्छ । जस्तै : राम बहादुर भनेको पुरुषको नाम हो । यो सामाजिक यथार्थ हो । राम बहादुर, कृष्ण प्रसाद महिलाको नाम हुन सक्दैन । यो विभिन्न समाजहरूमा सान्दर्भिक छ । नेवाः समाजमा आसनारांचा, न्हूजः, लूजः, बेखालाल, इत्यादी पुरुषकै नाम हुन् र लतःमैं, थकुंअजि, लुमन्ति, इत्यादी महिलाको नाम हुन् ।

शिशु अवस्थामा अभिभावकले राखिदिएको नामले पारलैङ्गिक व्यक्तिहरूले आफ्नो पहिचान खुलाएर जीवन यापन गरिसकेपछी व्यवहारिक र सामाजिक स्वीकार्यतामा असर पुर्याउँछ । आफू महिलाको रूपमा जीवन यापन गर्दैछन् र नागरिकतामा पुरुषको नाम छ भने यसले नीजको लैङ्गिक पहिचानको सामाजिक स्वीकार्यता मात्र होइन, नीजले कतै गएर आफ्नो नागरिकता प्रस्तुत गर्न परे मात्र होइन कि कतै पनि आफ्नो नाम लेखाउन परेमा नीजमाथी अनावश्यक प्रश्नको नालीबेली, लाञ्छना तथा विभेद निम्त्याउँछ । एउटा सरल उदाहरण लिनपर्दा एक पारलैङ्गिक पुरुष जो आफ्नो लैङ्गिक पहिचान अनुरूप नै बाँच्दैछन् उसको नागरिकतामा ऊ शिशु अवस्थामा हुँदा अभिभावकले राखिदिएको रीता कुमारी नाम उल्लेख छ र उसलाई कुनै सरकारी कार्यालयमा दर्खास्त दिनुछ भने मान्छेको आचरण पुरुषको नागरिकतामा महिला उल्लेख हुँदा व्यवहारिक चुनौती आउँछ । वा कसैले उनलाई बोलाउन रीता कुमारी भनेर बोलाए भने 'म हुँ' भनेर जान पनि आसपास बसेको मान्छेहरूले हेर्ने, कुरा

काट्ने, मुख बिगार्ने मात्र होइन कि उक्त कार्यालयका कर्मचारीहरू आफैले पनि लाञ्छनायुक्त व्यवहार गर्ने गर्दछन् ।

नाम भनेको व्यक्तिको आधारभूत अधिकार हो । आफू शिशुअवस्थामा अभिभावकले राखिदिएकै नाम मृत्यु नहुन्जेल नै चलाउनुपर्छ भन्ने बाध्यकारी नियम हुनुहुँदैन । सबै व्यक्तिहरूलाई आफ्नो पहिचानको अधिकार छ र आफूलाई कुन नामले पहिचान गर्ने भन्ने नीजको वैयक्तिक स्वतन्त्रताको विषय हो । आफूले इच्छाएको नामबाट आफू सम्बोधित हुन पाउनु सबैको नैसर्गिक अधिकार हो । यो विषय पारलैङ्गिक व्यक्तिहरूलाई मात्र लागु हुँदैन । जो कोहीलाई पनि नाम परिवर्तनको व्यवस्था आवश्यक हुन सक्छ । पारलैङ्गिक व्यक्तिहरूलाई भने यसको अभावले जीवनमा प्रत्यक्ष असर पारिरहेको छ ।हरेक मानिसलाई प्रतिष्ठापूर्ण जीवनको अधिकार छ र आफ्नो लैङ्गिक पहिचान नझल्कने प्रकारको नाम लिएर जीवन निर्वाह गर्न बाध्य पार्दा नीजले जीवन भर नै प्रतिष्ठा विहीन र आत्मसम्मान विहीन जीवन बिताउन बाध्य हुन्छ ।

पारलैङ्गिक व्यक्तिहरूको अधिकार सुनिश्चित गरेका राज्यहरूको कानुनमा पारलैङ्गिक व्यक्तिहरूले पहिचान खुलाएर बाहिरिनु अगाडी उनको लैङ्गिकता नझल्कने नामलाई मृतनाम (Deadname) भनेर चिन्दछ र कसैको पनि मृतनाम होइन, नीजले आफूलाई सम्बोधन गर्न चाहेको नामले नै सम्बोधन गर्नुपर्ने विषयलाई आधारभूत अधिकारको रूपला लिइन्छ । मृतनामको प्रयोगले पारलैङ्गिक व्यक्तिहरूलाई जिल्लती, असहज र अपमानित महसुस गराउँछ र कुनै पनि व्यक्तिलाई त्यस्तो जिल्लतीपूर्ण जीवन जिउन बाध्य गर्न हुँदैन ।

> *"मेरो विचारमा सरकारले अझै पनि लैङ्गिक विविधताको बारेमा बुझ्न सकेको छैन । हाम्रो समाजले महिलाको एउटा परिभाषा दिन्छ, पुरुषको अर्को परिभाषा दिन्छ । समाजका यी परिभाषाहरूमा फिट हुन नसकेका सबैलाई पोको पारेर एउटा बक्सामा कोच्याई यस विषयबाट पन्छिने प्रयास हो ।"*
>
> *- सुनसरीका एक पारलैङ्गिक पुरुष*
>
> *"मलाई पनि नागरिकतामा "अन्य" लेखेर दिएको छ । हुन त नाम परिवर्तन गर्ने मौका पाएँ । तर यो मैले चाहेको पहिचान नै होइन । म त महिला उल्लेख गरेको नागरिकता चाहन्छु । यही नागरिकताको चक्करले university नै भर्ना लिएको छैन । फेरी नागरिकता मात्र पाएर के हो पहिलेको सर्टिफिकेट पनि अहिले अनुसार बनाउन मिलिरहेको छैन । म त ३ वर्ष देखिन*

*अन्योलतामा छु, पढ्न पनि पाएको छैन । त्यत्रो मन्त्रालयमा गइरहेको छु केही भएकै छैन खै ।"*

*- ललितपुरका एक पारलैङ्गिक महिला*

"अन्य" उल्लेख गर्ने नागरिकताले पारलैङ्गिक व्यक्तिहरूको लैङ्गिक पहिचानलाई कुनै हिसाबले सम्बोधन गर्दैन । यो त झन अपमान पो हो ।

सर्वप्रथम त "अन्य" शब्द आफैमा अपमानजनक शब्द हो । कुनै व्यक्तिलाई आफ्नो लैङ्गिक पहिचानकै आधारमा अन्यकरण गर्नुले पहिचानको सम्मान होइन, अपमान गरेको छ । अन्यलिङ्गी भनेको के हो भनेर बुझ्दा नेपाल सरकार आफैमा स्पष्टता छैन । यो स्पष्टता किन छैन भने राज्य संयन्त्रमा बसेका मानिसहरूले लैङ्गिक विविधता बारे बुझेका नै छैनन् । हाम्रो समाजमा लैङ्गिकता सम्बन्धीको मान्यता नै के हो भन्दा कोही बच्चा लिंग लिएर जन्मन्छन्, ऊ पुरुष हुन्छ र कोही बच्चा योनी लिएर जन्मन्छन्, र ऊ महिला हुन्छ । यी दुई बाइनेरी बक्सामा अटाउने नभएपछी समाजले नानाथरीका लाञ्छना र अपमान तुल्य बनाउँछ ।

अन्यलिङ्गी भनेको के हो र को हो भन्ने स्पष्टता नै छैन । महिला र पुरुष बाहेकको व्यक्ति हुनु भनेको के हो र को हो ? लिङ्गमा "अन्य" उल्लेख गरी नागरिकता प्रदान गर्नुको उद्देश्य लैङ्गिक पहिचानको सम्मान होइन, बरु हाम्रो समाजले नबुझेको लैङ्गिकताहरूलाई बुझ्नै नखोजी कृपा गर्ने र यो बुझाइको भारलाई टार्ने हिसाबले ल्याइएको प्रावधान हो । हाल सम्म "अन्य" उल्लेख गरेको नागरिकता अधिकांश तेस्रोलिङ्गी व्यक्तिहरू, अनि अन्तर्लिङ्गी र पारलैङ्गिक व्यक्तिहरूलाई प्रदान गरिएको देखिन्छ ।

समाजमा महिला उत्पीडनको कारक पितृसत्ता, जातीय उत्पीडनको कारक ब्राह्मणवाद, भएजस्तै विविध लैङ्गिकता भएका व्यक्तिहरूको उत्पीडनको कारक त्याचलैङ्गिकमुग्धी (Cissexist/Cisnormative) धारणा हो । यसको अर्थ के हो भन्दा, समाजमा दुई वटा लैङ्गिकता हुन्छ र पुरुष भनेको लिंग लिएर जन्मने व्यक्तिहरू हुन्छन् अनि महिला भनेको योनी लिएर जन्मने व्यक्तिहरू हुन्छन् भन्ने धारणा हो । अन्यलिङ्गीको प्रावधान पनि यस्तै हो । त्याचलैङ्गिकमुग्धी धारणलाई केन्द्रमा राखेर यस बाहेकका लैङ्गिक पहिचानहरूलाई अपवादिकरण र अन्यकरण गरेर विविध लैङ्गिक पहिचान भएका व्यक्तिहरूको मुक्ति होइन, त्यही संकीर्ण सामाजिक भाष्यको पुनरुत्पादन मात्र हो । मानिसहरू लिंग वा योनी नै लिएर जन्मन्छन्, लिंग लिएर जन्मने सबै व्यक्तिहरू पुरुष नै हुन्छ वा योनी लिएर जन्मने सबै व्यक्तिहरू महिला नै हुन्छ अनि यो बाहेक पनि अपवादहरू हुन्छ भन्ने दृष्टिकोणबाट हेरिएसम्म लैङ्गिक विविधताका विषयहरू अन्यकरणमै पर्नेछन् ।

हाम्रो समाजले स्वीकारेको लैङ्गिकतालाई अर्को नाममा त्याचलैङ्गिक (Cisgender) भनिन्छ, जो लिंग लिएर जन्मछन् र लैङ्गिक पहिचान पुरुष अनि जो योनी लिएर जन्मछन् र लैङ्गिक पहिचान महिला । यस बाहेकका सबै लैङ्गिक विविधालाई पुरुष पनि होइन महिला पनि होइन भनेर अनुमान गर्नु नै गलत भयो ।

अन्तर्लिङ्गी व्यक्तिहरूको जैविक गुण पुलिङ्गी वा स्त्रीलिङ्गी शरीरका परिभाषामा नअटाउने हुन्छन्, तर लैङ्गिक अनुभूति, लैङ्गिक प्रस्तुतीकरण र लैङ्गिक पहिचानको आधारमा पुरुष, महिला वा गैर-द्वयसांखिक भनी पहिचान गर्छन् भन्ने विषय सोचिएको छैन । अन्तर्लिङ्गी हुनु त यौनाङ्ग र प्रजनन अङ्गको आधारमा हो, अन्तर्लिङ्गी व्यक्तिहरूको पनि आफ्नै लैङ्गिक पहिचान हुन्छ र अन्तर्लिङ्गी भएकै कारण स्वतः महिला पनि नहुने पुरुष पनि नहुने भन्ने धारणाले उनीहरूको लैङ्गिकता अझै कुण्ठित गर्दछ ।

जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग भन्दा विपरीत लैङ्गिक अनुभूती, अनुभव, प्रस्तुतीकरण र पहिचान हुने पारलैङ्गिक व्यक्तिहरू, आफूलाई महिला वा पुरुष भनेरै पहिचान गर्छन् । पारलैङ्गिक महिलाहरू महिला भनी पहिचान गर्छन् भने पारलैङ्गिक पुरुषहरू पुरुष भनी पहिचान गर्छन् । पारलैङ्गिक हुँदैमा जबरजस्ती तिमी महिला पनि होइन, पुरुष पनि होइन भनेर लाद्नु त लैङ्गिक पहिचानको सम्मान होइन, हनन पो भयो त ।

पुरुष वा महिलाको परम्परागत अवधारणामा नअटाउने विविध लैङ्गिक अनुभूती, प्रस्तुतीकरण तथा पहिचान भएका व्यक्तिहरू गैर-द्वयसांखिक भनी पहिचान गर्दछन्, हामी पारलैङ्गिक व्यक्तिहरू त कि पुरुष कि महिला भनी पहिचान गर्छौं । गैर-द्वयसांखिक र तेस्रोलिङ्गी व्यक्तिहरू पो महिला र पुरुष अन्तर्गत पहिचान नगर्ने व्यक्ति हुन् । तर यसो भन्दैमा उनीहरूको लैङ्गिक पहिचान जनाउने शब्द नै हुँदा हुँदै अन्यकरण गर्नु जायज होइन ।

> *"आफ्नो लैङ्गिक पहिचान अनुसार नागरिकता पाउनको लागि मेडिकल सर्टिफिकेट माग्ने अनि sex change surgery गर्नै पर्ने व्यवस्थाले पनि अर्को बाध्य उत्पन्न गरेको भने छ । "*
>
> *- बाराका एक पारलैङ्गिक महिला*

> *"मेडिकल सर्टिफिकेट चाह्यो भनेको त हामीलाई pathologize पो गर्यो त । यसले हामीलाई मानवताबाट नै strip off गरेको छ । मलाई त I don't want to talk about these things पनि । पारलैङ्गिक व्यक्ति हुनु कुनै असामान्यता*

*होइन भन्ने मान्यता स्थापित भैसक्दा, विश्व स्वास्थ्य संगठनले नै assert गरिसक्द पनि यो कुराहरू अझै explain गरिराख्न पर्नु नै आवश्यक हैन । "*

- *विराटनगरका एक पारलैङ्गिक पुरुष*

"लैङ्गिक पहिचान भन्नाले हरेक व्यक्तिको भित्री मनबाट आएको अनुभूति र लिङ्ग सम्बन्धी व्यक्तिगत अनुभव जुन जन्मदाको जैविक लिङ्गभन्दा विपरीत वा सो प्रतिकूल अन्य पहिरन बोली र व्यवहारबाट व्यक्त गरिने फरक लैङ्गिक अनुभूती सम्झनु पर्दछ" भनी सर्वोच्च अदालत (०७०-WO-०२८७ ) ले व्याख्या गरिसकेको छ । उक्त फैसलामै "कुनै पनि व्यक्तिले आफ्नो स्व अनुभूती अनुसारको लैङ्गिक पहिचान हासिल गर्नु निजको नितान्त वैयक्तिक आत्मनिर्णयको अधिकार अन्तर्गतको विषय हो । यसमा अरु व्यक्ति समाज राज्य वा कानूनले जैविक लिङ्ग के हो भनी निर्धारण गर्नु सान्दर्भिक हुँदैन ।" भनी उल्लेख गरिएको छ । यस्तो अवस्थामा पनि पारलैङ्गिक व्यक्तिहरूले आफ्नो लैङ्गिक पहिचान हासिल गर्नका निम्ति मेडिकल प्रमाणपत्र आवश्यक रहनु हुँदैन । मेडिकल प्रमाणपत्र आवश्यक व्यवस्था आफैमा गलत हो । कुनै व्यक्तिको लैङ्गिक पहिचान चिकित्सकले निर्धारण गर्नु मिल्दैन । यो Self-identification को विषय हो । चिकित्सकले हेर्न सक्ने भनेको नीजको यौनाङ्ग हो । यौनाङ्ग हेरेर पारलैङ्गिक व्यक्ति भन्ने विषय थहा पाइँदैन । कुनै व्यक्तिले आफूलाई महिला भनी अनुभूती गर्दछ कि पुरुष भनी अनुभूती गर्दछ भन्ने विषय चिकित्सकले निर्धारण गर्न सक्दैन । संसारमै त्यस्तो कुनै उपकरण नै छैन ।

पारलैङ्गिक व्यक्तिहरूको अधिकारलाई सुनिश्चित गरेको देशहरूमा पनि Self-identification लाई नै आधार मानिन्छ ।आफ्नो लैङ्गिक पहिचान हासिल गर्नका निम्ति यौनाङ्ग परिवर्तन शल्यक्रिया पनि अनिवार्य गर्नुहुँदैन । लैङ्गिक पहिचान प्राप्त गर्नका निम्ति राज्यले व्यक्तिको अरु मानव अधिकारहरूलाई हनन गर्न मिल्दैन । यौनाङ्ग परिवर्तन शल्यक्रिया गर्नु वा नगर्नु व्यक्तिको आत्मनिर्णयको अधिकार हो । Life changing surgery गर्न बाध्य गराउनु भनेको कुनै व्यक्तिको शारीरिक निष्ठाको हनन हो । आफ्नो लैङ्गिक पहिचान अनुसारको परिचयपत्र पाउनका निम्ति नीजलाई आफ्नो आत्मसम्मान र प्रतिष्ठामा आँच आउने, नीजको शारीरिक निष्ठामा खलल पुर्याउने, वा नीजको जीउ ज्यानमा अनुत्क्रमीय

(irreversible) क्षती पुर्याउने र नीजको आफ्नो जीवन प्रतिको आत्मनिर्णय र वैयक्तिक स्वतन्त्रताको अतिक्रमण गर्नु नीजको मानव अधिकारको नितान्त उल्लंघन हो ।

नागरिकतामा महिला उल्लेख गर्ने व्यक्तिहरूलाई श्रीमती, म्याडम, छोरी, she, इत्यादी भनेर सम्बोधन गरिन्छ र पुरुष उल्लेख गर्ने व्यक्तिहरूलाई श्रीमान्, सर, छोरा, he, इत्यादी भनेर सम्बोधन गरिन्छ । अन्य उल्लेख गर्ने व्यक्तिहरूलाई "अन्य" भनेर मात्र सम्बोधन गरिन्छ । प्रमाणपत्रहरूमा अङ्ग्रेजीमा लेखिन्छ, he / she को सट्टा पनि others लेखिन्छ, मिस्टर / मिसको सट्टा पनि others लेखिन्छ, son / daughter को सट्टा पनि others लेखिन्छ । नागरिकताको आवेदन फारममा पनि फलानाको छोरा/छोरी लेखेको दुबैलाई काटेर त्यसको सट्टा "अन्य" भनेर लेखिन्छ । एउटा मानिसलाई जनाउन पनि मानवीय शब्दको खोजी गर्न नसक्नु र यसरी एउटा मानव भएर पनि अमानवीयकरण हुनुपर्ने विडम्बना छ ।

विशेष गरी भाषाको विषयमा गम्भीर कुराकानी भएको थियो । संवेदनशील, मैत्रीपूर्ण र सही ढङ्गको भाषा प्रयोग नगर्दा पारलैङ्गिक व्यक्तिहरूलाई अधिकार दिने नियत हुँदा हुँदै पनि झन हानि पुर्याउन सक्छ । त्यसैले भाषागत हिसाबले शब्द शब्दमा छलफल गर्नुपर्ने भन्ने विषय उठान भयो । त्यसै गरी नेपाल सरकारले आफ्नै छुट्टै ढङ्गको परिभाषा निर्माण गर्नु भन्दा अन्तर्राष्ट्रिय मूल्य मान्यता अनुसारकै परिभाषाहरूलाई आत्मसात् गर्नुपर्नेमा जोड दिएको छ । यस मागपत्रसँग संगालिएका परिभाषाहरू पनि अन्तर्राष्ट्रिय मूल्य मान्यता बमोजिम नै छ ।

यस क्वयेर युथ ग्रुपले पनि लैङ्गिक तथा यौनिक विविधता सम्बन्धीका प्रचलित शब्दवालीहरूको नेपाली भाषामा शब्दकोष समेत निर्माण गरेको छ । भाषाको विषयमा ध्यान दिनुपर्ने कुरा, हाम्रो समाज र सामाजिक मूल्य मान्यताहरूलाई भाषाले पनि झल्काउँछ । किनभने हाम्रो सामाजिक मूल्य मान्यताहरूमा पारलैङ्गिक व्यक्तिहरूलाई समावेशिता छैन, स्वीकारिएको छैन, अन्यकरण र अपवादिकरण गरिएको छ, त्यसै गरी हाम्रो सामान्य बोलीचाली र प्रयोगको भाषामा पनि यो अन्यकरण, अपवादिकरण र असमावेशिता झल्कन्छ । तसर्थ भाषाको प्रयोगमा पारलैङ्गिक तथा लैङ्गिक विविधता समावेशी भाषा सम्बन्धि मार्गदर्शन केही आधारहरू हुनुपर्नेमा सबैले जोड दिएका थिए ।

पारलैङ्गिक तथा विविध लैङ्गिक व्यक्तिहरूलाई समावेशी र मैत्रीपूर्ण भाषा सम्बन्धी अङ्ग्रेजी भाषामा थुप्रै डिस्कोर्स भएर थुप्रै सामाग्रीहरू प्रकाशित भएर विभिन्न राज्य, विश्वविद्यालय तथा निकायहरूले ती मार्गदर्शनहरूलाई अपनाइसकेका पनि छन् । नेपाली भाषामा पनि यो कार्य गर्न अत्यावश्यक रहेको सबैले जोड दिए । पारलैङ्गिक तथा विविध लैङ्गिक व्यक्तिहरूलाई

अमैत्रीपूर्ण र असमावेशी सामान्यतः प्रयोगको भाषालाई कसरी मैत्रीपूर्ण र समावेशी ढङ्गले प्रयोग गर्न सकिन्छ भन्ने सम्बन्धी छलफल गरी, विश्लेषण गरी पुस्तक प्रकाशित गर्नुपर्छ भन्ने मुद्दा उठेको छ र त्यसै बमोजिम क्वयेर युथ ग्रुपले आगामि दिनहरूमा यस कार्यलाई प्राथमिकतामा राखे भएको छ ।

*"प्रायः कुनै सरकारी कार्यालय जाँदा तपाईँलाई सर भन्नुपर्ने कि म्याम भन्नुपर्ने जस्ता प्रश्नहरू गर्छन् । मलाई म्याम भन्नुपर्छ, म महिला हुँ भन्दा पनि त्यस विषयको सम्बोधन गरिएको देखिँदैन । अङ्ग्रेजी भाषामा What are your pronouns? (He/She/They) भनेर सोधिने गरिन्छ, त्यसै गरी नेपाली भाषामा यस्तो अभ्यासको विकास गर्नुपर्ने म जरुरी देख्दछु।"*

*- कास्कीका एक पारलैङ्गिक महिला*

*"मेरो विचारमा यो सजिलो विषय हो । महिलाहरूलाई स्त्रीलिङ्गी शब्दले सम्बोधन गर्ने, पुरुषहरूलाई पुलिङ्गी शब्दले सम्बोधन गर्ने र विविध लैङ्गिक व्यक्तिहरू - गैर-द्वयसांखिक व्यक्तिहरू र तेस्रोलिङ्गी व्यक्तिहरूलाई लैङ्गिक तटस्थ शब्दले सम्बोधन गर्ने । महिला भनेपछी सबै खाले महिला हुन् । यसमा पारलैङ्गिक महिलाहरू पनि समावेश हुन्छ ।"*

*- नुवाकोटका एक पारलैङ्गिक महिला*

*"यो विषयलाई यसरी अतिसरलीकरण पनि गर्नुहुँदैन । अङ्ग्रेजी भाषामा What is your pronouns भनेर सोध्नु त्यस भाषामा पुरुषहरूलाई he, महिलालाई she र गैर-द्वयसांखिक व्यक्तिहरूलाई they भन्ने सर्वनामहरू हो । हाम्रो भाषामा सबैलाई "ऊ" मात्र भनिन्छ । तर अरु शब्दहरूमा भने महिला पुरुष भनेर छुट्याइन्छ । सरकार र राज्यले पारलैङ्गिक महिलाहरूलाई महिलाको रूपमा र पारलैङ्गिक पुरुषहरूलाई पुरुषको रूपमा नहेरेको भएर यो समस्या उत्पन्न भएको हो ।"*

*- हेटौंडाका एक पारलैङ्गिक पुरुष*

यसरी उक्त दिनमा सातै प्रदेशबाट सहभागी भएका व्यक्तिहरू बीचको लगभग एक ६ महिनाको निरन्तर छलफल पश्चात यस राष्ट्रिय पारलैङ्गिक मागपत्र जारी भयो ।